# राप्ती उप-क्षेत्रीय अस्पताल विकास समिति (गठन) आदेश, २०६८

<u>नेपाल राजपत्रमा प्रकाशित मिति</u>

२०६८।३।१३

विकास समिति ऐन, २०१३ को दफा ३ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायको आदेश जारी गरेको छ ।

१. **<u>संक्षिप्त नाम र प्रारम्भ</u>** : (१) यस आदेशको नाम "राप्ती उप-क्षेत्रीय अस्पताल विकास समिति (गठन) आदेश, २०६८" रहेको छ ।

(२) यो आदेश तुरुन्त प्रारम्भ हुनेछ ।

२. **<u>परिभाषा</u>**: विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस आदेशमा,-

(क) "अध्यक्ष" भन्नाले समितिको अध्यक्ष सम्झनु पर्छ ।

(ख "अस्पताल" भन्नाले राप्ती उप-क्षेत्रीय अस्पताल सम्झनु पर्छ ।

(ग) "अस्पताल प्रमुख" भन्नाले दफा ६ बमोजिमको अस्पताल प्रमुख सम्झनु पर्छ ।

(घ) "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यस आदेश अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिएबमोजिम सम्झनु पर्छ ।

(ङ) "मन्त्रालय" भन्नाले स्वास्थ्य तथा जनसंख्या मन्त्रालय सम्झनु पर्छ ।

(च) "सदस्य" भन्नाले समितिको सदस्य सम्झनु पर्छ र सो शब्दले समितिको अध्यक्ष र समितिको सदस्य-सचिव समेतलाई जनाउँछ ।

(छ) "समिति" भन्नाले दफा ३ बमोजिम गठन भएको राप्ती उप-क्षेत्रीय अस्पताल विकास समिति सम्झनु पर्छ ।

३. **<u>समितिको गठन</u>**: (१) अस्पतालको चिकित्सास्तर र सेवामा अभिवृद्धि गरी अस्पताललाई विकास गर्ने कार्य समेतको लागि राप्ती उप-क्षेत्रीय अस्पताल विकास समिति नामको एक समिति रहनेछ ।

(२) उपदफा (१) बमोजिमको समितिको गठन देहायबमोजिम हुनेछः-

(क) लब्ध प्रतिष्ठित व्यक्तिहरूमध्येबाट नेपाल सरकारले मनोनीत गरेको व्यक्ति -अध्यक्ष

(ख) सभापति, जिल्ला विकास समिति, दाङ -सदस्य

(ग) प्रमुख जिल्ला अधिकारी, जिल्ला प्रशासन कार्यालय, दाङ -सदस्य

(घ) प्रमुख, तुलसीपुर नगरपालिका -सदस्य

(ङ) स्थानीय समाजसेवीहरूमध्येबाट एकजना -सदस्य

(च) चिकित्सकहरूमध्येबाट एकजना -सदस्य

(छ) मेडिकल अधिकृतहरूमध्येबाट एकजना

(ज) पारामेडिकल तथा नर्सिङ्ग स्टाफहरूमध्येबाट एकजना -सदस्य

(झ) अस्पतालको मेडिकल सुपरिटेण्डेण्ट -सदस्य-सचिव

(३) अध्यक्ष पदमा मनोनयन हुनको लागि कम्तीमा स्नातक तह उत्तीर्ण गरी सम्बन्धित क्षेत्रमा कम्तीमा पाँच बर्षको अनुभव हासिल गरेको हुनु पर्नेछ ।

(४) उपदफा (२) को खण्ड (ङ), (च), (छ) र (ज) बमोजिमका सदस्यको मनोनयन समितिको सिफारिसमा मन्त्रालयले गर्नेछ ।

(५) उपदफा (२) को खण्ड (ख) र (घ) बमोजिमका पदाधिकारीको पद कुनै कारणले रिक्त रहेको अवस्थामा त्यस्तो पदाधिकारीको कार्य गर्न अधिकार पाएको अधिकारीले समितिको बैठकमा प्रतिनिधित्व गर्नेछ ।

(६) उपदफा (२) बमोजिम मनोनीत सदस्यहरूको पदावधि दुई वर्षको हुनेछ ।

४. **समितिको काम, कर्तव्य र अधिकार** : (१) यस आदेशमा अन्यत्र लेखिएको काम, कर्तव्य र अधिकारको अतिरिक्त समितिको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

(क) अस्पतालको विकास सम्बन्धमा आवश्यक नीति, योजना तथा कार्यक्रम तर्जुमा गरी कार्यान्वयन गर्ने वा गराउने,

(ख) समितिको वार्षिक बजेट र कार्यक्रमहरू स्वीकृत गर्ने,

(ग) अस्पतालको भौतिक सम्पतिको संरक्षण तथा मर्मत सम्भार गर्ने,

(घ) अस्पतालबाट प्रदान गरिने सेवाको सञ्चालन, सुधार र विस्तारका लागि आवश्यक पर्ने स्रोत र साधनको पहिचान तथा खोजी गर्ने,

(ङ) वहिरङ्ग तथा अन्तरङ्ग चिकित्सा सेवा, प्रयोगशाला तथा अन्य सेवा प्रदान गरे वापत शुल्क निर्धारण गर्ने,

(च) आर्थिक दृष्टिले असक्षम मानिएका बिरामीको लागि निःशुल्क उपचारको व्यवस्था गर्ने,

(छ) स्वास्थ्य सम्बन्धी तालीम कार्यक्रम सञ्चालन गर्ने, गराउने,

(ज) समितिको कर्मचारीको क्षमता अभिवृद्धिको लागि विभिन्न किसिमका तालीम सञ्चालन गर्ने, गराउने तथा कर्मचारीलाई विशेष तालीम उपलब्ध गराउन मन्त्रालय समक्ष सिफारिस गर्ने,

(झ) समितिको कार्य सञ्चालनको लागि आवश्यकता अनुसार उपसमिति वा कार्यटोली गठन गरी त्यस्तो उपसमिति वा कार्यटोलीको काम, कर्तव्य र अधिकार तथा कार्यविधि तोक्ने,

(ञ) समितिको उद्देश्य प्राप्तिको लागि आवश्यक पर्ने अन्य कार्य गर्ने वा गराउने ।

५. **समितिको बैठक र निर्णयः** (१) समितिको बैठक आवश्यकता अनुसार बस्नेछ ।

(२) समितिको बैठक अध्यक्षले तोकेको मिति, समय र स्थानमा बस्नेछ ।

(३) समितिको बैठक हुनु भन्दा कम्तीमा चौबीस घण्टा अगावै सदस्य-सचिवले बैठकमा छलफल हुने विषय सहितको सूचना सबै सदस्यहरूलाई दिनु पर्नेछ ।

(४) समितिको कुल सदस्य संख्याको पचास प्रतिशत भन्दा बढी सदस्य उपस्थित भएमा समितिको बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(५) समितिको बैठकको अध्यक्षता अध्यक्षले र निजको अनुपस्थितिमा समितिका सदस्यहरूले आफूहरूमध्येबाट छानेको सदस्यले बैठकको अध्यक्षता गर्नेछ ।

(६) समितिको बैठकमा बहुमतको राय मान्य हुनेछ र मत बराबर भएमा बैठकको अध्यक्षता गर्ने व्यक्तिले निर्णायक मत दिनेछ ।

(७) समितिको निर्णय सदस्य-सचिवले प्रमाणित गरी राख्नेछ ।

(८) समितिले आवश्यक देखेमा नेपाल सरकारको कुनै अधिकृत वा सम्बन्धित विशेषज्ञलाई समितिको बैठकमा पर्यवेक्षकको रूपमा भाग लिन आमन्त्रण गर्न सक्नेछ ।

(९) समितिको बैठक सम्बन्धी अन्य कार्यविधि समिति आफैले निर्धारण गरे बमोजिम हुनेछ ।

६. **अस्पताल प्रमुख:** अस्पतालको मेडिकल सुपरिटेण्डेण्डले समितिको प्रशासकीय प्रमुखको रूपमा काम गर्नेछ ।

७. **कर्मचारी सम्बन्धी व्यवस्था:** (१) समितिमा आवश्यक संख्यामा कर्मचारीहरू रहने छन् ।

(२) यो आदेश प्रारम्भ हुँदाका बखत अस्पतालमा कार्यरत कर्मचारीहरू यो आदेश प्रारम्भ भएपछि समितिबाटै तलव भत्ता खाने गरी समितिको काम गर्ने गरी काजमा रहनेछन् ।

(३) उपदफा (२) बमोजिम समितिमा काजमा रहेका कर्मचारीहरूलाई आफ्नो स्रोतबाट व्यहोर्ने गरी समितिले थप सुविधा दिन सक्नेछ ।

(४) उपदफा (२) बमोजिम समितिमा काजमा रहेका नेपाल सरकारका कर्मचारीको सेवा, शर्त र सुविधा सम्बन्धी व्यवस्था निजको सेवा शर्त सम्बन्धी कानून बमोजिम हुनेछ ।

(५) उपदफा (२) बमोजिमका कर्मचारी समितिको लागि पर्याप्त नभएमा आफ्नै स्रोतबाट व्यहोर्ने गरी मन्त्रालयको पूर्व स्वीकृति लिई समितिले खुल्ला प्रतियोगिताद्वारा आवश्यक कर्मचारी नियुक्त गर्न सक्नेछ ।

(६) उपदफा (५) बमोजिम नियुक्त कर्मचारीको पारिश्रमिक, सेवाको शर्त र सुविधा तोकिएबमोजिम हुनेछ ।

८. **समितिको कोष** : (१) समितिको नाममा एउटा छुट्टै कोष रहनेछ ।

(२) उपदफा (१) बमोजिमको कोषमा देहायका रकमहरू रहने छन् :-

(क) नेपाल सरकारबाट प्राप्त रकम,

(ख) अस्पतालले प्रदान गरेको सेवा तथा सुविधा वापत प्राप्त रकम,

(ग) विदेशी सरकार, संघ, संस्था वा व्यक्तिबाट अनुदान वा ऋण स्वरूप प्राप्त रकम,

(घ) स्वदेशी व्यक्ति, संघ, संस्था वा निकायबाट प्राप्त रकम,

(ङ) अन्य स्रोतबाट प्राप्त रकम ।

(३) समितिले उपदफा (२) को खण्ड (ग) बमोजिम कुनै रकम प्राप्त गर्नु अघि नेपाल सरकारको स्वीकृति लिनु पर्नेछ ।

(४) समितिको तर्फबाट गरिने सम्पूर्ण खर्च उपदफा (२) बमोजिमको कोषबाट व्यहोरिनेछ ।

(५) समितिको कोषमा रहेको रकम समितिले नेपालको कुनै वाणिज्य बैंकमा खाता खोली जम्मा गर्नेछ ।

(६) समितिको कोषको सञ्चालन समितिले तोके बमोजिम हुनेछ ।

९. **सम्बन्धित कार्यको लागि रकम खर्च गर्नु पर्नेः** नेपाल सरकारबाट समितिलाई प्राप्त भएको रकम जुन कार्यक्रम वा कामको लागि प्राप्त भएको छ, सोही कार्यक्रम र काममा खर्च गर्नु पर्नेछ ।

१०. **लेखा र लेखापरीक्षण**ः (१) समितिको आय व्ययको लेखा नेपाल सरकारले अपनाएको ढाँचा बमोजिम राखिनेछ ।

(२) समितिले तोकिएबमोजिम समितिको आय व्ययको आन्तरिक नियन्त्रण प्रणाली कायम गर्नेछ ।

(३) समितिको आन्तरिक लेखापरीक्षण मान्यता प्राप्त लेखा परीक्षकहरूमध्येबाट समितिले तोकेको लेखा परीक्षकले गर्नेछ ।

(४) समितिको अन्तिम लेखापरीक्षण महालेखा परीक्षक वा निजले तोकेको लेखापरीक्षकबाट हुनेछ ।

(५) मन्त्रालयले चाहेमा समितिको आय-व्ययको लेखा, नगदी, जिन्सी वा अन्य कागजात जुनसुकै बखत जाँच्न वा जाँच्न लगाउन सक्नेछ ।

११. **बैठक भत्ता**ः सदस्यहरूले समितिको बैठकमा भाग लिए वापत मन्त्रालयले तोके बमोजिम बैठक भत्ता पाउने छन् ।

१२. **वार्षिक प्रतिवेदन पेश गर्नेः** समितिले वर्षभरीमा गरेको काम कारबाहीको प्रतिवेदन प्रत्येक आर्थिक वर्ष समाप्त भएको पैतालीस दिनभित्र मन्त्रालय समक्ष पेश गर्नु पर्नेछ ।

१३. **अधिकार प्रत्यायोजनः** समितिले यस आदेश बमोजिम आफूलाई प्राप्त अधिकार मध्ये आवश्यकता अनुसार केही अधिकार अध्यक्ष, सदस्य, सदस्य-सचिव, अस्पताल प्रमुख, समितिले गठन गरेको उपसमिति वा कार्यदल वा समितिको कुनै अधिकृत कर्मचारीलाई प्रत्यायोजन गर्न सक्नेछ ।

१४. **निर्देशन दिनेः** (१) मन्त्रालयले समितिद्वारा गरिने काम कारबाहीको सम्बन्धमा समितिलाई आवश्यक निर्देशन दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम दिइएको निर्देशनको पालना गर्नु समितिको कर्तव्य हुनेछ ।

१५. **नेपाल सरकारसँग सम्पर्क** : समितिले नेपाल सरकारसँग सम्पर्क राख्दा मन्त्रालय मार्फत राख्नु पर्नेछ।

१६. **समितिको कार्यालय** : समितिको कार्यालय दाङ्ग जिल्लाको घोराहीमा रहनेछ ।

१७. **नियम बनाउने अधिकारः** (१) यस आदेशको उद्देश्य कार्यान्वयन गर्न समितिले आवश्यक नियम बनाउन सक्नेछ ।

तर आर्थिक दायित्व पर्ने विषयमा अर्थ मन्त्रालयको पूर्व स्वीकृति लिनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम बनेको नियम मन्त्रालयबाट स्वीकृत भएपछि लागू हुनेछ ।

१८. **खारेजी र बचाउ** : (१) दाङ्ग अस्पताल विकास समिति (गठन) आदेश, २०५९ खारेज गरिएको छ ।

(२) उपदफा (१) बमोजिमको आदेश अनुसार भए गरेका काम कारबाहीहरू यसै आदेश बमोजिम भए गरेको मानिनेछन् ।